فَانْطَلَقَا ۗ حَتَّىٰ إِذَا لَقِيَا غُلَامًا فَقَتَلَهُ ۙ قَالَ أَقَتَلْتَ نَفْسًا زَكِيَّةً بِغَيْرِ نَفْسٍ لَّقَدْ جِئْتَ شَيْئًا نُّكْرًا ﴿٧٤﴾

(७४) अनि दुबै हिंडे, यहाँसम्मकि एउटा बालक[1] लाई फेला पारे, (खिज़्रले) त्यसलाई मारिदिए, (मूसाले) सोधे कि के तपाईंले एउटा पवित्र आत्मालाई बिना कुनै प्रतिहत्या मारिदिनु भो ? निःसन्देह तपाईंले त बडो नराम्रो कुरो गर्नुभयो ।[2]

The Ummah Technology Mission

[1]गुलामसित तात्पर्य वयस्क नवयुवक पनि हुनसक्छ तथा अल्पवयस्क बालक पनि ।

[2](نُكراً، فظيعا منكرا لا يعرف في الشرع) यस्तो ठूलो नराम्रो कार्य जसको धार्मिक नियममा स्थान छैन । केही ज्ञाताहरूले भने कि यसको अर्थ (أنكر من الأمر الأول) प्रथम कार्य (डुङ्गाका तख्ता भाँचि प्वाल पार्नु) भन्दा अधिक नराम्रो कार्य । यसकारण कि हत्या यस्तो कार्य हो जसको क्षतिपूर्ति तथा समापन गर्नु असम्भव छ जबकि डुङ्गाका तख्ता उखेलेर फालिदिनु, यस्तो कार्य हो जसको पूर्ति तथा समापनको साधन छ । केही व्याख्याकारहरूले यसका अर्थ निकालेका छन्, प्रथम कार्यभन्दा कम, यसकारण कि एक प्राणको हत्या गर्नु पुरै डुङ्गामा सवार यात्रीहरूलाई डुबाइदिनुभन्दा कम छ (फ़तहुल क़दीर) । तर प्रथम भावार्थ नै उचित छ किनभने आदरणीय मूसालाई जुन धार्मिक नियमहरूको ज्ञान प्राप्त थियो, त्यसको आधारमा आदरणीय खिज़्रको यो कार्य कुनै पनि प्रकारले नियमको विरूद्ध थियो जसको आधारमा उनले विरोध गरे तथा त्यसलाई अत्याधिक नराम्रो कार्य भने ।